विज्ञान



विश्वको दोस्रो धनी व्यक्ति मस्कले स्पेसएक्स कम्पनीका माध्यमबाट मानिसलाई मङ्गल ग्रहमा बसोबास गराउने योजनामा रहेका छन्। यसका लागि उनको कम्पनी स्पेसएक्सले मानिसहरूलाई मङ्गल ग्रहमा पठाउने प्रोजेक्टमा काम गरिरहेको छ।

# म एलिन !



■ अजय शर्मा

अहिले विश्वमा निकै चर्चित व्यक्तिमध्ये एलन मस्क एक हुन्। उनी स्पेसएक्स र टेस्ला कम्पनीका मालिक हुन्, जसको योजना मानिसहरूलाई मङ्गल ग्रहमा बसोबास गराउने, चालकबिनाको कार बनाउने, भ्याक्युम टनेलमा चल्ने सुपर फास्ट रेल चलाउने, मानव दिमागमा आर्टिफिसियल इन्टेलिजेन्स जोड्ने र सौर्य ऊर्जाबाट संसार चलाउने रहेको छ। केही समय अघि मात्र मस्कले "म एक एलियन हुँ" भन्दै एक ट्विट गरेका थिए।

विश्वको दोस्रो धनी व्यक्ति मस्कले स्पेसएक्स कम्पनीका माध्यमबाट मानिसलाई मङ्गल ग्रहमा बसोबास गराउने योजनामा रहेका छन् । यसका

> सबैले चिन्दा सूचना प्रविधि र नवीन कुराको खोजकर्ता एलन मस्क अहिले अमेरिकी उद्यमी हुन्। तर, उनको जन्म दक्षिण अफ्रिकामा भएको थियो। उनकी आमा क्यानडियन हुन् भने बाबु दक्षिण अफ्रिकी हुन्। अहिलेको नम्बर वान अनलाइन पेमेन्ट सिस्टम पेपाल, स्पेसएक्स र विद्युतीय कार टेस्ला निर्माण गरिसकेका एलन मस्क सधैं नयाँ कुरा गर्न रुचाउछन्।

लागि उनको कम्पनी स्पेसएक्सले मानिसहरूलाई मङ्गल ग्रहमा पठाउने प्रोजेक्टमा काम गरिरहेको छ । यस्तै अर्को महत्त्वकाङ्क्षी योजनाअन्तर्गत उनको अर्को कम्पनी टेस्लाले चालकबिनाको कार बनाउने अभियान रहेको छ । यसका साथै एलन मस्कका अन्य द बोरिङ कम्पनी, न्यूरालिङ्क र सोलार सिटीलगायतका सहायक कम्पनी पनि छन् ।

यस्तै मस्कको अर्को रोचक काम पनि जारी छ । उनी न्यूरालिङ्क कम्पनीमार्फत मानिसको मस्तिष्कमा लगाउने कम्प्युटर चिपको तयारीमा जुटेका छन् । सुन्दा अचम्म लाग्न सक्छ तर यस काममा उनी केही अघि बढिसकेका छन् । मस्कले केही समयभित्र मानिसको दिमागमा कम्प्युटर चिप लगाउने घोषणासमेत गरेका छन् । उनको यो योजना पूर्ण रूपमा सफल भयो भने मानिसको दिमागलाई कम्प्युटरसँग जोड्न सकिने छ ।

एलन मस्कमा अद्‌भूत सोच छ, त्यसैले उनी कसैले नसोचेको व्यवसायमा हात हाल्छन् र त्यसलाई सम्भावनाको ठूलो क्षेत्र भएको पुष्टि गर्छन् । त्यसो त, मस्क 'रियल वर्ल्ड'को 'आइरन म्यान'को नामले पनि चिनिन्छन् । सूचना प्रविधि जगत्मा स्टिभ जब्सपछि मस्कलाई सूचना प्रविधिको विकासमा लागेका प्रमुख व्यक्तिका रूपमा चिनिने गरिएको छ । मस्कको बाल्यकाल हेर्ने हो भने निकै दयनीय र दर्दनाक छ, उनी जन्मँदै यति धेरै धनी र सफल व्यक्ति होइनन् । उनी सानै छँदा आमा र बाबुको सम्बन्धविच्छेद भएको थियो । बाबुआमाको सम्बन्धविच्छेदपछि उनी बाबुसँग बसेका थिए । उनका बुवाले एलनलाई मानसिक तनाव दिने गर्थे । उनी सानो छँदादेखि आफैँ अध्ययन गर्थे, बाल्यकालमा यति पुस्तक पढे कि उनको घरनजिक भएका दुईवटा पुस्तकालयमा पढ्ने पुस्तक नै बाँकी रहेनन् । त्यति मात्र कहाँ हो र, उनले त इन्साइक्लोपेडिया नै पढेर सक्याएका थिए । एलन मस्कलाई विभिन्न किताबको अध्ययनबाट रकेट, ग्रह, वायुमण्डललगायतका बारेमा निकै धेरै ज्ञान प्राप्त भयो । सानो छँदा उनले आफैँले कम्प्युटर प्रोग्रामिङ सिकेका थिए । जसले उनलाई नयाँनयाँ प्रविधिमा फरक काम गर्न सक्षम बनायो । मस्कको विद्यालय भने जीवन त्यति धेरै सन्तोषजनक भएन ।

उनले पुस्तक मात्र अध्ययन गरेनन् त्यसबाट प्राप्त ज्ञानलाई प्रयोग पनि गरे । १० वर्षको उमेरमा उनले कम्प्युटर कोडिङको पुस्तक पढेर कोडिङ सिकेर १२ वर्षको उमेरमा 'ब्लास्टर' नामको गेम बनाए । त्यही गेमबाट पाँच सय डलर पुरस्कार पनि पाएका थिए । यसलाई उनको पहिलो व्यावसायिक उपलब्धि मान्न सकिन्छ ।

सबैले चिन्दा सूचना प्रविधि र नवीन कुराको खोजकर्ता एलन मस्क अहिले अमेरिकी उद्यमी हुन् तर उनको जन्म दक्षिण अफ्रिकामा भएको थियो । उनकी आमा क्यानडियन हुन् भने बाबु दक्षिण अफ्रिकी हुन् । अहिलेको नम्बर वान अनलाइन पेमेन्ट सिस्टम पेपाल, स्पेसएक्स र विद्युतीय कार टेस्ला निर्माण गरिसकेका एलन मस्क सधैँ नयाँ कुरा गर्न रुचाउँछन् । उनी मङ्गल ग्रहमा कोलोनी बनाउन चाहन्छन्, कार उद्योगमा क्रान्ति ल्याउन चाहन्छन्, भ्याक्युम टनेलमा चल्ने सुपर फास्ट रेल चलाउन चाहन्छन्, मानव दिमागमा आर्टिफिसियल इन्टेलिजेन्स जोड्न चाहन्छन् र सौर्य ऊर्जाबाट संसार चलाउन चाहन्छन् । उनी परम्परागत शैलीको व्यापार र उद्यम गर्दैनन् । उनले गरेका काम हेर्दा लाग्छ उनी साँच्चिकै 'एलिन हुन्' । ■

**विभिन्न अनलाइन र एजेन्सीको सहयोगमा**